# अस्माकम् संस्कृतम्

## कक्षा २

नाम : ..........................................................................

क्रमाङ्क : ....................

विद्यालय : ..........................................................................

नेपाल सरकार
शिक्षा, विज्ञान तथा प्रविधि मन्त्रालय
पाठ्यक्रम विकास केन्द्र
सानोठिमी, भक्तपुर

# हाम्रो भनाइ

पाठ्यक्रम शिक्षण सिकाइको मूल आधार हो । पाठ्यपुस्तक विद्यार्थीमा अपेक्षित दक्षता विकास गर्ने एक मुख्य साधन हो । यस पक्षलाई दृष्टिगत गर्दै पाठ्यक्रम विकास केन्द्रले विद्यालय शिक्षालाई व्यावहारिक, समयसापेक्ष र गुणस्तरीय बनाउने उद्देश्यले पाठ्यक्रम तथा पाठ्यपुस्तकको विकास तथा परिमार्जन कार्यलाई निरन्तरता दिँदै आएको छ । आधारभूत शिक्षाले बालबालिकामा आधारभूत साक्षरता, गणितीय अवधारणा र सिप एवम् जीवनोपयोगी सिपको विकासका साथै व्यक्तिगत स्वास्थ्य तथा सरसफाइसम्बन्धी बानीको विकास गर्ने अवसर प्रदान गर्नुपर्छ । आधारभूत शिक्षाको माध्यमबाट बालबालिकाहरूले प्राकृतिक तथा सामाजिक वातावरणप्रति सचेत भई अनुशासन, सदाचार र स्वावलम्बन जस्ता सामाजिक एवम् चारित्रिक गुणको विकास गर्नुपर्छ । यसले विज्ञान, वातावरण र सूचना प्रविधिसम्बन्धी आधारभूत ज्ञानको विकास गराई कला तथा सौन्दर्यप्रति अभिरुचि जगाउनुपर्छ । शारीरिक तन्दुरुस्ती, स्वास्थ्यकर बानी एवम् सिर्जनात्मकताको विकास तथा जातजाति, धर्म, भाषा, संस्कृति, क्षेत्रप्रति सम्मान र समभावको विकास पनि आधारभूत शिक्षाका अपेक्षित पक्ष हुन् । देशप्रेम, राष्ट्रिय एकता, लोकतान्त्रिक मूल्यमान्यता तथा संस्कार सिकी व्यावहारिक जीवनमा प्रयोग गर्नु, सामाजिक गुणको विकास तथा नागरिक कर्तव्यप्रति सजगता अपनाउनु, स्तरअनुकूल व्यवहारकुशल सिपको प्रयोग गर्नु र दैनिक जीवनमा आइपर्ने व्यावहारिक समस्याहरूको पहिचान गरी समाधानका उपायको खोजी गर्नु पनि आधारभूत तहको शिक्षाका आवश्यक पक्ष हुन् । यी पक्षलाई दृष्टिगत गरी आधारभूत तह (कक्षा १-३) को पाठ्यक्रम, २०७६ अनुरूप ऐच्छिक विषयका रूपमा संस्कृत भाषा विषयको यो पुस्तक विकास गरिएको छ । यो पुस्तक आधारभूत विद्यालय तहको कक्षा २ मा नमुना पाठ्यपुस्तक तथा कार्यपुस्तकका रूपमा प्रयोग गरिने छ । यसमा बहुविषयक एकीकृत ढाँचाको पाठ्यक्रमको कार्यान्वयनलाई सहयोग पुग्ने गरी विषयवस्तुलाई विभिन्न विषयसँग सम्बन्धित हुने विषयक्षेत्रमा आधारित गरिएको हुँदा विद्यार्थीको सिकाइलाई अन्तरसम्बन्धित गरी दैनिक जीवनसँग सम्बन्धित गर्न र सान्दर्भिक बनाउन सहयोग पुग्ने विश्वास गरिएको छ ।

संस्कृत भाषा विषयको यस पुस्तकको विकास उपप्रा. रोहिणीराज तिमिल्सिना, श्री शिवराज लामिछाने, श्री कमल नेपाल र श्री पुरुषोत्तम घिमिरे सम्मिलित कार्यदलबाट भएको हो । यस नमुना विद्यार्थी कार्यपुस्तकको विकास कार्यमा श्री अणप्रसाद न्यौपाने, श्री केशवप्रसाद दहाल, प्रा.डा. माधवशरण उपाध्याय, प्रा. ध्रुवप्रसाद ज्ञवाली, प्रा. डा. नारायणप्रसाद गौतम, डा. मुकुन्दप्रसाद लामिछाने, सहप्रा. ध्रुवप्रसाद भट्टराई, श्री टुकराज अधिकारी, श्री गणेशप्रसाद भट्टराई, श्री निश्चल अधिकारी, श्री शालिग्राम ढकाल, श्री गणेशप्रसाद तिमिल्सिना, श्री मनोज भण्डारी र श्री पर्वतराज घिमिरेको विशेष योगदान रहेको छ । यस पुस्तकको लेआउट डिजाइन श्री खडोस सुनुवारबाट भएको हो । यस पुस्तकको विकास तथा सम्पादन कार्यमा संलग्न सबैप्रति पाठ्यक्रम विकास केन्द्र धन्यवाद प्रकट गर्दछ ।

पाठ्यपुस्तकले विद्यार्थीमा निर्धारित सक्षमता विकासका लागि विद्यार्थीलाई सहयोग गर्ने छ । यसले विद्यार्थीको सिकाइमा सहयोग पुऱ्याउने एउटा महत्त्वपूर्ण र आधारभूत सामग्रीका रूपमा कक्षा क्रियाकलापबाट हुने सिकाइलाई मजबुत बनाउन सहयोग गर्ने छ । त्यसैले यो शिक्षकको सिकाइ क्रियाकलापको योजना नभई विद्यार्थीका सिकाइलाई सहयोग पुऱ्याउने सामग्री हो । यसका लागि यस पाठ्यपुस्तकलाई विद्यार्थीको सिकाइमा सहयोग पुऱ्याउने एउटा महत्त्वपूर्ण आधारका रूपमा बालकेन्द्रित, सिकाइकेन्द्रित, अनुभवकेन्द्रित, उद्देश्यमूलक, प्रयोगमुखी र क्रियाकलापमा आधारित बनाउने प्रयास गरिएको छ । सिकाइ र विद्यार्थीको जीवन्त अनुभवबिच तादात्म्य कायम गर्दै यसको सहज प्रयोग गर्न शिक्षकले सहजकर्ता, उत्प्रेरक, प्रवर्धक र खोजकर्ताका रूपमा भूमिकाको अपेक्षा गरिएको छ । यसलाई अझ परिष्कृत पार्नका लागि शिक्षक, विद्यार्थी, अभिभावक, बुद्धिजीवी एवम् सम्पूर्ण पाठकहरूको समेत विशेष भूमिका रहने हुँदा सम्बद्ध सबैको रचनात्मक सुझावका लागि पाठ्यक्रम विकास केन्द्र हार्दिक अनुरोध गर्दछ ।

वि.सं. २०७८

पाठ्यक्रम विकास केन्द्र
सानोठिमी, भक्तपुर

# विषयसूची

# विद्यार्थी कार्यपुस्तक कार्यान्वयनका सम्बन्धमा

१. कक्षा ३ मा संस्कृत पढ्ने विद्यार्थीका लागि संस्कृत दोस्रो भाषा हो । तसर्थ विद्यार्थीमा नेपाली तत्सम शब्दबाहेकको संस्कृत भाषाको अपेक्षित शब्दभण्डार नहुन पनि सक्छ । त्यसैले यो पुस्तक विकास गर्दा पाठ्यक्रमको मूल मर्मअनुरूप लयबोध, गति, यति र हाउभाउसहित सस्वरवाचन गरी विषयवस्तुमा प्रवेश गराउनुहोस् ।

२. भाषा सिकाइलाई प्रभावकारी र व्यवस्थित बनाउन ध्वनि सचेतीकरणण, लेख्यवर्णको पहिचान र प्रयोग, शब्दभण्डार, पठन प्रवाह, दृश्यबोध, श्रुतिबोध तथा पठनबोध र लेखाइसम्बद्ध क्रियाकलाप गराउनुहोस् ।

३. संस्कृत असीमित ज्ञानराशि र असङ्ख्य शब्दभण्डार भएको समृद्ध भाषा हो । त्यसैले प्रारम्भिक तहबाट नै यस भाषामा निबद्ध सबै विषयको ज्ञान गराउन सम्भव छैन । तसर्थ प्रारम्भिक तहमा प्रयुक्त सबै शब्दको पहिलो भाषामा जस्तै उच्चारण, अर्थबोध र प्रयोग गराउनुभन्दा भाषिक रूपान्तरण र स्थानान्तरणका माध्यमले सिकाइ गर्नु गराउनु उपयुक्त हुन्छ । तसर्थ यसको सिकाइ सहजीकरणका क्रममा भाषिक रूपान्तरण र स्थानान्तरणमा विशेष जोड दिनुहोस् । यसका लागि यहाँ एउटै अर्थ दिने विभिन्न शब्दहरू दिइएका छन् । यसो गर्नुको कारण शब्दको वैकल्पिक प्रयोगबाट पुनरावृत्तिसहित वर्णको चिनारी गराउनु हो । अतः दिइएका शब्द र अर्थलाई हुबहु उपयोग नगरी तिनको सान्दर्भिक प्रयोग मात्र गर्नुहोस् । यसलाई अन्य भाषाको शब्दभण्डार अभिवृद्धिका लागि पनि उपयोग गर्नुहोस् ।

४. यस पुस्तकमा दिइएका चित्र वर्णन गर्दा विद्यार्थीलाई आफ्नो भाषा हुँदै संस्कृतका शब्द प्रयोग गर्न लगाउनुहोस्, जस्तै : कृष्ण यहाँ आऊ । कृष्णः अत्र आगच्छः । यसका लागि अन्य विषयमा उपयोग भएका परिचित चित्रबाट पनि अभ्यास गराउनुहोस् ।

५. सिकाइ सहजीकरणका क्रममा दोस्रो भाषा शिक्षण विधि तथा बहुभाषिक शिक्षण विधि अवलम्बन गर्नुहोस् ।

६. पहिलो भाषामा निर्देशन दिई दोस्रो भाषाको सिकाइ सहजीकरणका साथै भाषिक स्थानान्तरण र रूपान्तरण गर्ने अन्तर्राष्ट्रिय शैक्षणिक प्रचलन रहेको र त्यो प्रभावकारी पनि मानिएकाले यस पुस्तकमा सोही विधि र प्रक्रिया अपनाइएको छ । यही मर्मलाई आत्मसात् गरी यसको प्रयोग गर्नुहोस् ।

७. यस पुस्तकमा प्रारम्भिक कक्षा पढाइका आधारभूत पक्ष (ध्वनि सचेतीकरण, लेख्यवर्ण सचेतीकरण, शब्दभण्डार, पठन प्रवाह, बोध र लेखाइ) लाई प्राथमिकताका साथ समावेश गरिएकाले यसको सिकाइ सहजीकरणका क्रममा कक्षा ३ का (विशेषतः नेपाली र अङ्ग्रेजी) का शिक्षक निर्देशकाबाट सहयोग लिनुहोस् ।

८. यस पुस्तकमा समावेश गरिएका श्लोक वा लयबद्ध पाठलाई पालैपालो (फरक दिनमा फरक श्लोक) सामूहिक रूपमा सस्वरवाचन गर्ने अभ्यास गराउनुहोस् । हरेक दिन एउटा पाठलाई कक्षाको सुरुमा गाएर सुनाउन लगाउनुहोस् । सस्वरवाचन गर्दा सबैभन्दा पहिलो शिक्षकले नमुना वाचन गरी सुनाउनुहोस् । त्यसपछि शिक्षक र विद्यार्थीले सँगसँगै गाउनुहोस् । अन्त्यमा विद्यार्थीलाई आफैँ वाचन गर्न लगाउनुहोस् ।

९. हरेक पाठमा प्रयुक्त शब्दको नेपाली र अङ्ग्रेजी भाषामा अर्थ समावेश गरी यसलाई पाठको अन्त्यमा राखिएको छ । सिकाइ सहजीकरणका क्रममा शिक्षकले ती अर्थलाई उपयोग गरी भाषिक रूपान्तरण र स्थानान्तरणलाई टेवा दिनुहोस् ।

# प्रथमः पाठः

## वर्णाः

१. **शिक्षकेण सह वाचयत** *(शिक्षकसँगै गाउनुहोस्)*



अजः



काकः

क-ख-ग-घाः स्पर्शाः चेत् च-छ-ज-झाः के ?
इमे अपि स्पर्शाः एव मान्तकाः सर्वे ।
य-र-ल-वाः अन्तःस्थाः शेषाः हलः के ?
श-ष-स-हाः ऊष्माणः हलः इत्येते ॥



छत्रम्



वनम्

अ-आ-इ तु स्वराः ये अचः कथ्यन्ते
अ-इ-उ-ऋ-लृ च ह्रस्वाः दीर्घाः तदन्ये ।
प्लुतभेदः सर्वेषाम् स्वराणाम् ज्ञेयः
त्रिभेदकम् व्यञ्जनम् स्वरः त्रिभेदः ॥

क ख ग घ स्पर्शवर्ण हुन् भने च छ ज झ के हुन् ? यी पनि स्पर्श नै हुन् । म वर्णसम्मका सबै वर्ण स्पर्श हुन् । य र ल व अन्तःस्थ हुन् । बाँकी व्यञ्जन के हुन् ? श ष स ह ऊष्म वर्ण हुन् । यी सबै व्यञ्जन वर्ण हुन् । अ आ इ लाई स्वर वर्ण भनिन्छ । अ इ उ ऋ लृ ह्रस्व स्वर हुन् । अरू स्वर वर्ण दीर्घ हुन् । सबै स्वरको प्लुत भेद पनि हुन्छ । व्यञ्जन र स्वरका तीन तीन प्रकार हुन्छन् ।

२. **उदाहरणानुसारेण कोष्ठकात् वर्णान् विचित्य रिक्तस्थाने लिखत** *(उदाहरणअनुसार कोष्ठकबाट वर्णहरू छानी खाली ठाउँमा लेख्नुहोस्)*

| | | | | |
|---|---|---|---|---|
| स्पर्शवर्णाः - | ज | त | फ | (अ, ज, त, ल, आ, फ) |
| स्पर्शवर्णाः - | --------- | --------- | --------- | (छ, स, ऋ, ध, व, ब) |
| अन्तःस्थवर्णाः - | --------- | --------- | --------- | (ल, ढ, र, ह, य, लृ) |
| ऊष्मवर्णाः - | --------- | --------- | --------- | (ए, य, श, ह, म, स) |
| स्वरवर्णाः - | --------- | --------- | --------- | (ई, ष, ओ, ऐ, ख, व) |

३. चित्रम् आधृत्य कोष्ठकस्थानाम् वर्णानाम् कृते संज्ञाशब्दम् लिखत *(चित्र हेर्नुहोस् र कोष्ठकका वर्णसमूहका लागि उपयुक्त शब्द लेख्नुहोस्)*




| वर्णाः | | | |
|---|---|---|---|
| क, ख, ग, घ, ङ<br>च, छ, ज, झ, ञ<br>ट, ठ, ड, ढ, ण<br>त, थ, द, ध, न<br>प, फ, ब, भ, म | य, र, ल, व | श, ष, स, ह | अ, आ, इ, ई, उ, ऊ, ऋ,<br>ॠ, ऌ, ए, ऐ, ओ, औ |
| ........................ | ........................ | ........................ | ........................ |

४. शब्दम् श्रुत्वा उच्चारयत *(सुन्नुहोस् र शब्दको उच्चारण गर्नुहोस्)*

स्वरः, ह्रस्वः, दीर्घः, प्लुतः

व्यञ्जनम्, स्पर्शः, अन्तस्थः, ऊष्मा

५. वर्णानाम् उच्चारणम् श्रुत्वा अनूच्चारणम् विधाय स्वल्पध्वनियुक्तस्य वर्णस्य कृते 'ह्रस्वः', दीर्घध्वनियुक्तस्य च कृते 'दीर्घ' इति लिखत *(शिक्षकबाट उच्चारण सुनी उच्चारण गरेर छोटो ध्वनि निस्किने वर्णलाई 'ह्रस्वः' र लामो ध्वनि निस्किने वर्णलाई 'दीर्घः' लेख्नुहोस्)*

| | | |
|---|---|---|
| अ - ह्रस्वः | आ - दीर्घः | ई - दीर्घः |
| इ - .................... | ए - .................... | ओ - .................... |
| ऐ - .................... | उ - .................... | औ - .................... |
| ॠ - .................... | ॡ - .................... | ऊ - .................... |

६. अन्तःस्थवर्णस्य ऊष्मवर्णस्य च प्रयोगाधारेण शब्दान् समुचितप्रकोष्ठे लिखत *(अन्तःस्थवर्ण र ऊष्मवर्णको प्रयोग भएका शब्दहरू चिनी उपयुक्त कोठामा लेख्नुहोस्)*

यज्ञः, शशकः, सन्धितम्, रात्रिः, अष्ट, अहः, वृद्धः, लेखनी

| अन्तःस्थाः | | ऊष्माणः | |
|---|---|---|---|
| ------------------------ | ------------------------ | ------------------------ | ------------------------ |
| ------------------------ | ------------------------ | ------------------------ | ------------------------ |

७. परस्परम् मेलयत *(जोडा मिलाउनुहोस्)*

| | |
|---|---|
| ष | स्पर्शः |
| उ | अन्तःस्थः |
| ड | ऊष्मा |
| र | स्वरः |

## ८. श्रवणानन्तरम् पठत *(सुन्नुहोस् र पढ्नुहोस्)*



वनस्य समीपे षट् शशकाः निवसन्ति । तेषु एकः रुग्णः अस्ति । सः इतस्ततः चलितुम् न शक्नोति । सः एकत्र एव तिष्ठति । अन्ये शशकाः परस्परम् क्रीडन्ति । ते सह एव धावन्ति, सह एव भ्रमन्ति । किन्तु ते गृहात् दूरम् न यान्ति । ते वन्यजन्तुभ्यः बिभ्यति । शृगालः तान् आक्रमते । अन्येभ्यः हिंस्रकजन्तुभ्यः अपि तेषाम् भयम् भवति । अत एव ते सदैव सावधानाः भवन्ति ।

वननजिकै छओटा खरायो बस्छन् । उनीहरूमध्ये एउटा बिरामी छ । ऊ यताउता हिँड्डुल गर्न सक्दैन । ऊ एकै ठाउँमा बसिरहन्छ । अरू खरायोहरू आपसमा खेल्छन् । उनीहरू सँगसँगै कुद्छन्, सँगसँगै नै घुम्छन् । तर उनीहरू घरबाट टाढा जाँदैनन् । उनीहरू वन्यजन्तुबाट डराउँछन् । स्यालले उनीहरूलाई आक्रमण गर्छ । अन्य हिंस्रक वन्यजन्तुबाट पनि उनीहरूलाई डर हुन्छ । त्यसैले उनीहरू सधैँ सावधान रहन्छन् ।

९. अनुच्छेदम् पठित्वा समध्वनियुक्तौ शब्दौ परस्परम् मेलयत *(अनुच्छेद पढी समान ध्वनिको प्रयोग भएका शब्दबिच जोडा मिलाउनुहोस्)*

वृषभः क्षेत्रम् कर्षति । युवकः बीजम् वपति । सूर्यः प्रकाशम् यच्छति । जलम् वृक्षम् सिञ्चति । वृक्षे फलम् फलति । वानरः फलम् हरति । युवकः वानराय क्रुध्यति ।

| | |
|---|---|
| वृषभः | फलति |
| युवकः | यच्छति |
| सूर्यः | कर्षति |
| फलम् | हरति |
| वानरः | वपति |

गोरु खेत जोत्छ । युवक बिउ लगाउँछ । सूर्यले प्रकाश दिन्छ । पानीले वृक्षलाई भिजाउँछ । वृक्षमा फल फल्छ । वानरले फल चोर्छ । युवक वानरसित रिसाउँछ ।

१०. अनुच्छेदे रेखाङ्कितान् शब्दान् अनुलिख्य उच्चारयत *(अनुच्छेदमा रेखाङ्कन गरिएका शब्द सार्नुहोस् र उच्चारण गर्नुहोस्)*

भाषायाम् वर्णानाम् प्रयोगः भवति । भाषायाम् स्वल्पाः ध्वनयः प्रयुज्यन्ते । तेषाम् ध्वनीनाम् द्योतकानि चिह्नानि वर्णाः भवन्ति । वर्णाः अक्षराणि च कथ्यन्ते । वर्णशब्दस्य मूलः अर्थः रङ्गः भवति । रङ्गः इत्यर्थः परिवर्त्य ध्वनौ अक्षरे वा प्रसिद्धः अभवत् । वर्णाः अखण्डाः मन्यन्ते ।

वर्णानाम् --------------------------

स्वल्पाः ------------------------

द्योतकानि ------------------------

अक्षराणि ------------------------

रङ्गः ------------------------

परिवर्त्य ------------------------

प्रसिद्धः ------------------------

अखण्डाः ------------------------

भाषामा वर्णहरूको प्रयोग हुन्छ । भाषामा साना ध्वनिहरू प्रयोग गरिन्छन् । ती ध्वनिलाई बुझाउने चिह्न वर्ण हुन् । वर्णलाई अक्षर पनि भनिन्छ । वर्ण शब्दको मूल अर्थ रङ हो । रङ भन्ने अर्थ फेरिएर ध्वनि वा अक्षरमा प्रसिद्ध भयो । वर्ण अखण्ड मानिन्छन् ।

**स्पर्शः** = क देखि म सम्मका २५ वर्णको साझा नाम, Name of the first 25 Devanagari consonant letters
**अन्तःस्थः** = य र ल व वर्णको साझा नाम, Name of the four Devanagari consonant letters (26th to 29th)
**ऊष्मा** = श ष स ह वर्णको साझा नाम, Name of the last four Devanagari consonant letters (30th to 33th)
**स्वरः** = अ, आ आदि अच् वर्णको नाम, Name of the Devanagari vowels
**अचः** = स्वर वर्णहरू, Devanagari vowels
**हलः** = व्यञ्जन वर्णहरू, Devanagari consonants
**व्यञ्जनम्** = स्वर वर्ण नलागेका आफैं उच्चरित हुन नसक्ने क् देखि ह् सम्मका देवनागरी वर्णहरू/खुट्टो काटिने वर्ण, Name of Devanagari consonants
**त्रिभेदकम्** = तीनओटा प्रकार भएको, With three types
**त्रिभेदः** = तीनओटा प्रकार भएको, With three types
**ह्रस्वः** = एक मात्रा भएको स्वर वर्ण, The letter taking short time in pronunciation
**दीर्घः** = दुई मात्रा भएको स्वर वर्ण, The letter taking long time in pronunciation
**मान्तकाः** = म सम्मका, Up to letter Ma
**सर्वे** = सबै, All
**कथ्यन्ते** = भनिन्छन्/कहिन्छन्, To be told (to be said)
**तदन्ये** = त्यसबाहेक, Apart from that
**शेषाः** = बाँकी, Remaining
**भेदः** = प्रकार, Type
**एते** = यिनीहरू, These
**एव** = नै, Certainly

## द्वितीयः पाठः

# संयुक्ताक्षराणि

१. **शिक्षकेण सह वाचयत** *(शिक्षकसँगै गाउनुहोस्)*

वृक्षे पश्यतु पक्वम् आम्रम्
पुष्पोद्याने रक्तम् पुष्पम् ।
मार्गे पतितम् पत्रम् पश्यतु
धान्यम् द्रष्टुम् क्षेत्रम् गच्छतु ॥



दुग्धम् मधुरम्, भक्तम् स्वादु
ज्ञानम् यच्छति ज्ञानी साधुः ।
द्वारपालकः द्वारे तिष्ठति
मम जनयित्री मह्यम् स्निहयति ॥

| |
|---|
| पाकेको आँपको रुख हेर । बगैँचामा रातो फूल हेर । बाटामा खसेका पात हेर । धान हेर्न खेतमा जाऊ । दुध मिठो हुन्छ । भात पनि मिठो हुन्छ । विद्वान् साधुले ज्ञान दिन्छन् । पाले ढोकामा उभिन्छन् । मेरी आमा मलाई माया गर्नुहुन्छ । |

२. **मानचित्रे रङ्गम् भरित्वा रङ्गनामानि कथयत** *(नक्सामा रङ भरी नाम भन्नुहोस्)*



३. अनुच्छेदम् पठित्वा क्ष, त्र, ज्ञ इति अक्षराणि रेखया परिवेष्टयत *(अनुच्छेद पढी क्ष, त्र, ज्ञ भएका शब्दमा गोलो घेरा लगाउनुहोस्)*




विद्यालयः सुन्दरः अस्ति । विद्यालये उद्यानम् अस्ति । तत्र पुष्पस्य वृक्षाः सन्ति । वृक्षेषु चित्राणि पुष्पाणि फुल्लन्ति । विज्ञानः रक्तानि पुष्पाणि चिनोति । प्रज्ञा उद्यानस्य रक्षाम् करोति ।

विद्यालय राम्रो छ । विद्यालयमा बगैँचा छ । त्यहाँ फूलका रुखहरू छन् । रुखहरूमा रङ्गीचङ्गी फूलहरू फुल्छन् । विज्ञान राता फूलहरू टिप्छ । प्रज्ञा बगैँचाको रक्षा गर्दछिन् ।

४. सारिणीम् विलोक्य शब्दस्थानि निर्दिष्टानि अक्षराणि रेखया परिवेष्टयत *(तालिका हेरी शब्दका त्यही अक्षरमा गोलो घेरा लगाउनुहोस्)*

| | | |
|---|---|---|
| क्+ष्+अ = क्ष | क्षयः | वृक्षः |
| त्+र्+अ = त्र | त्रासः | पवित्रम् |
| ज्+ञ्+अ = ज्ञ | ज्ञानम् | प्रज्ञा |
| द्+व्+अ = द्व | द्वादश | विद्वान् |
| द्+ध्+अ = द्ध | शुद्धः | बद्धः |
| श्+र्+अ = श्र | परिश्रमः | विश्रामः |
| द्+य्+अ = द्य | विद्या | विद्युत् |

४. शब्दान् उच्चार्य संयुक्ताक्षराणि रेखया परिवेष्टयत *(शब्दको उच्चारण गर्नुहोस् र संयुक्त अक्षरमा गोलो घेरा लगाउनुहोस्)*

(क) आम्रम्　　(ख) धन्यः　　(ग) वृक्षः

(घ) पत्रम्　　(ङ) उद्यानम्　　(च) विज्ञानः

५. शब्देषु भिन्नरङ्गेण सङ्केतितानि अक्षराणि विलिख्य वर्णान् वियोजयत *(शब्दमा फरक रङले देखाइएका संयुक्त अक्षर लेखी वर्णहरू छुट्याउनुहोस्)*



त्रपुरी - त्र = त्+र्+अ



विद्युत् - ------ = ----------------



वक्षः - ------ = ----------------



उष्ट्रः - ------ = ----------------



विज्ञानम् - ------ = ----------------

६. उदाहरणम् अनुसृत्य समुचितैः अक्षरैः चित्रनामानि लिखत *(उदाहरण हेरी मिल्ने अक्षर राखेर चित्रको नाम लेख्नुहोस्)*


(क) ऋक्षः


(ख) पत्रम्


(ग) क्रुद्धः


(घ) रक्तम्


(क) वृ....


(ख) छ ...म्


(ग) बु....


(घ) भ...म्

७. शिक्षकमुखात् श्रुत्वा अधस्तनश्लोकौ वाचयत *(तलका श्लोकहरू शिक्षकबाट सुन्नुहोस् र पढ्नुहोस्)*

त्रायन्ते ज्ञानिनः पापान् मूढान्धान् लोभपाशगान् ।
त्रासम् सर्वविधम् घ्नन्ति क्षमाम् यच्छन्ति सर्वदा ॥

उत्सवे व्यसने चैव दुर्भिक्षे शत्रुविग्रहे ।
राजद्वारे श्मशाने च यस्तिष्ठति स बान्धवः ॥

ज्ञानीहरू लोभको पासोमा फसेका मूर्ख पापीहरूको उद्धार गर्दछन् । उनीहरू सबै किसिमका डर हटाउँछन् र सधैँ क्षमा प्रदान गर्दछन् ।

जो खुसीको बेलामा साथमा हुन्छ, दुःखको बेलामा पनि साथमा हुन्छ, अनिकाल परेको बेलामा पनि साथमा हुन्छ, झगडा परेको बेलामा पनि साथमा हुन्छ, राज्यबाट आपत् आउँदा पनि साथमा हुन्छ र मृत्युपछि मसानघाट जाने बेलामा समेत साथमा हुन्छ त्यही नै बान्धव वा आफन्त हो ।

८. अनुच्छेदम् पठित्वा समुचितशब्दैः रिक्तस्थानम् पूरयत *(अनुच्छेद पढ्नुहोस् र खाली ठाउँमा उचित शब्द राख्नुहोस्)*



क्षेत्रे आम्रस्य वृक्षः अस्ति । वृक्षे आम्राणि सन्ति । आम्राणि पक्वानि सन्ति । पक्वानि आम्राणि मिष्टानि भवन्ति । त्रयः भ्रातरः द्वादश आम्राणि चिन्वन्ति । अक्षयः, निर्देशः, प्रज्ञानः च गृहम् गच्छन्ति । निर्देशः एकम् आम्रम् खादति । प्रज्ञानः द्वे आम्रे भक्षयति । अक्षयः त्रीणि आम्राणि खादति । त्रयः भ्रातरः षट् आम्राणि खादन्ति । अवशिष्टानि आम्राणि ते मात्रे अर्पयन्ति । माता तान् धन्यवादम् व्याहरति । माता पित्रा सह अवशिष्टानि आम्राणि द्विधा वण्टयति ।

(क) क्षेत्रे ......... वृक्षः अस्ति ।

(ख) आम्राणि ...... सन्ति ।

(ग) अक्षयः .......... .......... च गृहम् गच्छन्ति ।

(घ) निर्देशः ....... आम्रम् ........।

(ङ) माता आम्राणि ......... वण्टयति ।

खेतमा आँपको रुख छ । रुखमा आँपहरू छन् । आँपहरू पाकेका छन् । पाकेका आँप मिठा हुन्छन् । तीन दाजुभाइ बाह्रओटा आँप टिप्छन् । अक्षय, निर्देश र प्रज्ञान घर जान्छन् । निर्देश एउटा आँप खान्छ । प्रज्ञान दुईओटा आँप खान्छ । अक्षय तीनओटा आँप खान्छ । तीन भाइले छओटा आँप खान्छन् । बाँकी आँप उनीहरू आमालाई बुझाउँछन् । आमा उनीहरूलाई धन्यवाद दिनुहुन्छ । आमा बाँकी आँप बुबासित दुई भागमा बराबर बाँड्नुहुन्छ ।

## ९. चित्रम् वर्णयत *(चित्र हेरी वर्णन गर्नुहोस्)*



| | | |
|---|---|---|
| वृक्षः - रुख, Tree | उद्यानम् - बगैँचा, Garden | ज्येष्ठः - जेठो, Elder |
| पक्वम् - पाकेको, Ripe | पुष्पाणि - फूलहरू, Flowers | द्वादश - बाह्र, Twelve |
| पुष्पोद्यानम् - फूलको बगैँचा, Garden | द्रष्टुम् - हेर्न, To see | भक्षयति - खान्छ, Eats |
| रक्तम् - रातो, Red | क्षेत्रम् - खेत, Watered field | अवशिष्टानि - बाँकी, Remaining |
| मार्गे - बाटामा, On the road | दुग्धम् - दुध, Milk | वण्टयति - बाँड्नुहुन्छ, Allocates |
| पत्रम् - पात, Leaf | भक्तम् - भात, Rice | त्रपुरी - सुकुमेल, Cardamom |
| धान्यम् - धान, Paddy | चित्राणि - अनेकथरी, Verities | विद्युत् - बिजुली, Electricity |
| यच्छति - दिन्छ, Gives | चिनोति - टिप्छ, Pikes | वक्षः - छाती, Chest |
| साधुः - साधु, Sage | करोति - गर्छ, Does | उष्ट्रः - उँट, Camel |
| द्वारपालकः - पाले, Gateman | क्रुद्धः - रिसाएको, Angry | विज्ञानम् - विज्ञान, Science |
| जनयित्री - आमा, Mother | आम्रम् - आँप, Mango | धन्यवादः - धन्यवाद, Thanks |
| स्निह्यति - माया गर्नुहुन्छ, Loves | मिष्टानि - मिठा, Sweet | |

## तृतीयः पाठः

## सङ्ख्या

१. शिक्षकेण सह वाचयत *(शिक्षकसँगै गाउनुहोस्)*

एका तुलसी द्वे करवीरे
तिस्रश्चम्पाः मन्दसमीरे ।
वहन्ति गन्धम् विदधति गानम्
रम्यम् मम खलु पुष्पोद्यानम् ॥



लताश्चतस्रः पञ्च फलानि
षड् भृङ्गाः नव कमलदलानि ।
अष्ट च कलिकाः विदधति गानम्
रम्यम् मम खलु पुष्पोद्यानम् ।

| |
|---|
| एउटा तुलसीको बोट छ । दुइटा करबीर फूल छन् । तीनओटा चम्पा फूल छन् । सिरसिर चलेको बतासमा सुगन्ध बहेको छ । (चराले) गीत गाएका छन् । मेरो बगैँचा रमाइलो छ । चारओटा लहरा र पाँचओटा फल छन् । (बगैँचामा) छओटा भमरा र नौओटा कमलका फूल छन् । आठओटा कोपिला छन् । (चरा) गीत गाउँछन् । मेरो बगैँचा रमाइलो छ । |

२. चित्रस्य साहाय्येन कोष्ठकात् शब्दम् विचित्य रिक्तस्थानम् पूरयत *(चित्र हेर्नुहोस् र कोष्ठकबाट शब्द छानी खाली ठाउँ भर्नुहोस्)*

(क) ------------ बालकः अस्ति ।
------------ बालिका अस्ति ।
------------ मन्दिरम् अस्ति ।

(एकः, एका, एकम्)



एउटा बालक छ । एउटी बालिका छे । एउटा मन्दिर छ ।

(ख) ------------ छात्रौ स्तः ।

------------ छात्रे स्तः ।

------------ गृहे स्तः ।

(द्वौ, द्वे, द्वे)



दुई जना छात्र छन् । दुई जना छात्रा छन् । दुईओटा घर छन् ।

(ग) ------------ पुरुषाः सन्ति ।

------------ नार्यः सन्ति ।

------------ पत्राणि सन्ति

(त्रयः, तिस्रः, त्रीणि)



तीन जना पुरुष छन् । तीन जना नारी छन् । तीनओटा पात छन् ।

(घ) ------------ शिक्षकाः सन्ति ।

------------ शिक्षिकाः सन्ति ।

------------ पुस्तकानि सन्ति ।

(चत्वारः, चतस्रः, चत्वारि)



चार जना शिक्षक छन् । चार जना शिक्षिका छन् । चारओटा पुस्तक छन् ।

३. चित्रस्थानि वस्तूनि गणयित्वा अधस्तनान् शब्दान् उच्चारयत *(चित्रका वस्तु गन्नुहोस् र तल दिइएका शब्दको उच्चारण गर्नुहोस्)*

| | | |
|---|---|---|
|  |  |  |
| पञ्च | षट् | सप्त |
|  |  |  |
| अष्ट | नव | दश |

४. उदाहरणम् अनुसृत्य शब्दान् निर्मात *(उदाहरण हेरी शब्द बनाउनुहोस्)*

(क) इ ष् ट् अः - इष्टः

अ ष् ट् अ - .....................



(ख) स् अ प् त् अ - सप्त

श् अ प् त् अः - .....................



(ग) प् अ ञ् च् अ - पञ्च

म् अ ञ् च् अः - .....................



(घ) स् अ र् अः - सरः

श् अ र् अः - .....................



(ङ) म् ऊ ष् अ क् अः - मूषकः

द् ऊ ष् अ क अः - ....................



## ५. कोष्ठकस्थैः शब्दैः चित्रनामानि लिखत *(कोठाबाट शब्द छानी चित्रको नाम लेख्नुहोस्)*



-----------------------------



-----------------------------



-----------------------------



-----------------------------



-----------------------------

त्रिभुजाकारः
वर्गाकारः
गोलाकारः
पञ्चकोणः
षट्कोणः

## ६. अधस्तनम् अनुच्छेदम् पठत *(तलको अनुच्छेद पढ्नुहोस्)*

मम नाम रामप्रसादः शर्मा अस्ति । अहम् भरतपुरनगरे निवसामि । अद्य अहम् प्रसन्नः अस्मि । अद्य श्रावणसङ्क्रान्तिः वर्तते । अयम् दिवसः कर्कटसङ्क्रान्तिः अपि कथ्यते । अस्मात् दिनात् सूर्यस्य तापः क्रमेण क्षीणः भवति । अद्य पारिवारिकमेलनम् भवति । सर्वे मिलित्वा मिष्टान्नम् खादन्ति । कतिपयाः जनाः विशेषेण स्नानम् दानम् च कुर्वन्ति । श्रावणसङ्क्रान्तेः सायम् ग्रामीणाः मूलौषधेन सह अग्निक्षेपणम् कुर्वन्ति । अनेन कार्येण चर्मरोगः विनश्यति इति विश्वस्यते ।



मेरो नाम रामप्रसाद शर्मा हो । म भरतपुरमा बस्छु । म आज खुसी छु । आज साउने सङ्क्रान्ति हो । यसलाई कर्कट सङ्क्रान्ति पनि भनिन्छ । यस दिनबाट सूर्यको ताप क्रमैले कम हुँदै जान्छ । यस दिन पारिवारिक भेटघाट गरिन्छ । सबै मिलेर मिठा खानेकुरा खान्छन् । कतिपय मानिस विशेष रूपमा स्नान र दान पनि गर्दछन् । साउने सङ्क्रान्तिको बेलुका गाउँलेहरू जडीबुटीसहित बलेको आगो फाल्छन् । यसबाट छालाको रोग नाश हुन्छ भन्ने विश्वास गरिन्छ ।

## ७. शिक्षकमुखात् श्रुत्वा शब्दान् उच्चारयत *(शिक्षकबाट सुनेर शब्दको उच्चारण गर्नुहोस्)*

एकादश, पञ्चदश, सप्तदश, द्वादश, अष्ट, तिस्रः, पुष्पोद्यानम्, चतस्रः, द्वौ

## ८. अनुच्छेदम् पठित्वा उचितोत्तरम् लिखत *(अनुच्छेद पढेर सही उत्तर छानी लेख्नुहोस्)*

एकम् वनम् अस्ति । वने एकादश वृक्षाः सन्ति । द्वादश पुष्पाणि सन्ति । त्रयोदश लताः सन्ति । चतुर्दश नद्यः सन्ति । पञ्चदश वानराः सन्ति । षोडश मृगाः सन्ति । सप्तदश कपोताः सन्ति । अष्टादश सर्पाः सन्ति । नवदश मयूराः सन्ति । विंशतिः मूषकाः सन्ति । वने एकः सिंहः अस्ति । सिंहात् सर्वे भीताः सन्ति । सर्पात् मूषकाः भीताः सन्ति । मयूरात् सर्पाः भीताः सन्ति ।



(क) वने कति मृगाः सन्ति ?

(अ) षोडश (आ) सप्तदश (इ) नवदश

(ख) मूषकाः कति सन्ति ?

(अ) विंशतिः (आ) एकादश (इ) पञ्चदश

(ग) सर्पाः कति सन्ति ?

(अ) अष्टादश (आ) दश (इ) नव

(घ) कपोताः कति सन्ति ?

(अ) सप्त (आ) सप्तदश (इ) अष्टादश

एउटा वन छ । वनमा एघारओटा वृक्ष छन् । बाह्रओटा फूल छन् । तेरओटा लहरा छन् । चौधओटा नदी छन् । पन्ध्रओटा बाँदर छन् । सोरओटा मृग छन् । सत्रओटा परेवा छन् । अठारओटा सर्प छन् । उन्नाइसओटा मयूर छन् । बिसओटा मुसा छन् । वनमा एउटा सिंह छ । सिंहदेखि सबै डराएका छन् । सर्पदेखि मुसा डराएका छन् । मयूरदेखि सर्प डराएका छन् ।

९. कोष्ठकात् उचितान् सङ्ख्यावाचकान् शब्दान् चित्वा रिक्तस्थानम् पूरयत *(कोठाबाट उपयुक्त सङ्ख्यावाचक शब्द छानेर खाली ठाउँ भर्नुहोस्)*

| द्वौ, त्रयः, चत्वारः, पञ्च, षट्, सप्त, अष्ट, नव, दश, एकादश, द्वादश, त्रयोदश |
|---|

(क) मम ---------------------------- हस्तौ स्तः ।

(ख) मम गृहे ---------------------------- जनाः सन्ति ।

(ग) मम विद्यालये ---------------------------- शिक्षकाः सन्ति ।

(घ) अहम् ---------------------------- वर्षीयः अस्मि ।

(ङ) मम हस्ते ---------------------------- अङ्गुल्यः सन्ति ।

(च) नेपाले ---------------------------- प्रदेशाः सन्ति ।

तुलसी - तुलसी, Holly basil
करवीरम् - करवीर फूल, Oleander
चम्पा - चम्पा, Plumeria
मन्दसमीरः - मन्द हावा, Slow wind
गन्धः - बास्ना, Fragrance

वहति - बोक्छ, Carries
फलानि - फलहरू, Fruits
कमलदलानि - कमलका पत्र, Petals of lotus
पुष्पोद्यानम् - फूलबारी, Garden

विदधति - गर्छन्, Do
खलु - अवश्य, Certainly
कलिका - कोपिला, Bud
भृङ्गः - भमरो, Black beetel

# चतुर्थः पाठः शरीराङ्गानि

## १. शिक्षकेण सह वाचयत *(शिक्षकसँगै गाउनुहोस्)*

शिवांशस्य केशः कुत्र वर्तते ?
शिरसि वर्तते, शिरसि वर्तते ।

जिहवा दन्तः कुत्र वर्तते ?
मुखे वर्तते, मुखे वर्तते ।

लेखनी हस्ते, पादे उपानत्
नेत्रे कज्जलम् तस्य वर्तते ।

वेणुः ओष्ठे, हस्ते पुस्तकम् ।
देशस्य भक्तिः मनसि वर्तते ॥



शिवांशको केश कहाँ छ ? शिरमा छ । जिब्रो र दाँत कहाँ छन् ? मुखमा छन् । हातमा कलम र खुट्टामा जुत्ता छन् । उनको आँखामा गाजल छ । ओठमा बाँसुरी छ । हातमा पुस्तक छ । मनमा देशको माया छ ।

## २. चित्रम् दृष्ट्वा रिक्तस्थानम् पूरयत *(चित्र हेरेर खाली ठाउँ भर्नुहोस्)*

मम ...... सुन्दरम् अस्ति । मम द्वात्रिंशत् .......... सन्ति ।
दन्तस्य निकटे ...... अस्ति । सा रसम् जानाति । पितामहस्य
शिरसि .......नास्ति । .......... लेखनीम् धारयति ।



मुखम्, जिहवा, दन्ताः, केशः, हस्तः

## ३. चित्रम् विलोक्य शब्दान् उच्चारयत *(चित्र हेरेर शब्दको उच्चारण गर्नुहोस्)*



ओष्ठौ



नखः



उदरम्



कर्णः



नासिका



ललाटः

## ४. उदाहरणम् अनुसृत्य शब्दम् रचयत *(उदाहरण हेरेर शब्द बनाउनुहोस्)*

क् अ र् ण् अ : = कर्णः

व् अ र् ण् अ : = --------------------

ओ ष् ठ् अ : = ओष्ठः

ग् ओ ष् ठ् अ : = --------------------

ज् इ ह् व् आ = जिह्वा

अ श् व् आ : = --------------------

भ् अ क् त् इ : = भक्तिः

श् अ क् त् इ : = --------------------

## ५. परस्परम् मेलयत *(जोडा मिलाउनुहोस्)*

ओष्ठः 

नेत्रम् 

हस्तः 

पादः 

शिरः 

## ६. अधस्तनम् अनुच्छेदम् पठत *(तलको अनुच्छेद पढ्नुहोस्)*



अद्य जन्माष्टमी अस्ति । थारूभाषायाम् एतत् पर्व 'अष्टिम्की' इति नाम्ना प्रसिद्धम् वर्तते । फगुनी थारूः अद्य प्रसन्ना अस्ति । सा प्रातः स्नानम् करोति । ततः फलम् खादति । सा जलम् च पिबति । ततः आदिनम् व्रतम् करोति । रात्रौ कृष्णपूजाम् करोति । तस्याः माता अपि पूजाम् करोति ।

आज जन्माष्टमी हो । थारू भाषामा यो पर्व 'अष्टिम्की' नामले प्रसिद्ध छ । फगुनी थारू आज प्रसन्न छिन् । उनी बिहान नुहाउँछिन् । त्यसपछि फलफूल खान्छिन् । उनी पानी पनि पिउँछिन् । अनि दिनभर व्रत बस्छिन् । राति कृष्णाको पूजा गर्छिन् । उनकी आमा पनि पूजा गर्नुहुन्छ ।

## ७. पठनानन्तरम् प्रश्नान् उत्तरयत *(पढ्नुहोस् र प्रश्नको उत्तर दिनुहोस्)*

नासिका जिघ्रति । पादः गच्छति । नेत्रम् पश्यति । कर्णः शृणोति । मुखम् खादति । दन्ताः भोजनम् चर्वन्ति । मातुः उदरे बालकः वसति । नरः स्कन्धे भारम् वहति ।

(क) का जिघ्रति ?

(अ) नासिका (आ) कर्णः (इ) दन्ताः

(ख) दन्ताः किम् चर्वन्ति

(अ) भारम् (आ) मुखम् (इ) भोजनम्

(ग) नरः कुत्र भारम् वहति ?

(अ) स्कन्धे (आ) नेत्रे (इ) उदरे

(घ) कर्णः किम् करोति ?

(अ) शृणोति (आ) खादति (इ) गच्छति

नाकले सुँघ्छ । खुट्टाले हिँड्छ । आँखाले हेर्छ । कानले सुन्छ । मुखले खान्छ । दाँतहरूले खाना चबाउँछन् । आमाको पेटमा बालक बस्छ । मानिस काँधमा भार बोक्छ ।

८. चित्राणि दृष्ट्वा शब्दानाम् उच्चारणम् लेखनम् च कुरुत *(चित्र हेरी शब्दको उच्चारण गर्नुहोस् र लेख्नुहोस्)*

| | |
|---|---|
|  |  |
| दन्तधावनम् | मुखप्रक्षालनम् |
| ---------------------------------------- | ---------------------------------------- |
|  |  |
| पादकन्दुकम् | ललाटरेखा |
| ---------------------------------------- | ---------------------------------------- |

केशः - कपाल, Hair
शिरः - टाउको, Head
जिह्वा - जिब्रो, Tongue
दन्तः - दाँत, Tooth
मुखम् - मुख, Mouth
लेखनी - कलम, Pen
हस्तः - हात, Hand
पादः - गोडा, Foot
उपानत् - जुत्ता, Shoe

नेत्रम् - आँखा, Eye
कज्जलम् - गाजल, Collyrium
वेणुः - बाँसुरी, Flute
ओष्ठः - ओठ, Lip
अद्य - आज, Today
स्नानम् - नुहाउनु, To take a bath
आदिनम् - दिनभर, Whole day
व्रतम् - व्रत, Religious vow
रात्रिः - राति, Night

नासिका - नाक, Nose
जिघ्रति - सुँघ्छ, Smells
कर्णः - कान, Ear
चर्वन्ति - चपाउँछन्, Chew
नखः - नङ, Nail
उदरम् - पेट, Abdomen
स्कन्धः - काँध, Shoulder
ललाटः - निधार, Forehead
भारः - भारी, Burden

# मम दिनचर्या

## पञ्चमः पाठः

## कार्यकलापाः



१. शिक्षकेण सह वाचयत *(शिक्षकसँगै गाउनुहोस्)*

अधुना प्रातः कालः जातः
शीघ्रम् निद्राम् त्यज हे भ्रातः !



जनकः अर्चति देवम् सूर्यम्
अनुजा कुरुते दन्तधावनम् ।
जननी पचति स्वल्पाहारम्
त्वम् शय्याम् जहि शीघ्रम् शीघ्रम् ॥ अधुना ... ।





चटकः गायति मधुरम् गीतम्
अनुजे ! पिब पिब सलिलम् शीतम् ।
भ्रातः शेषे एकाकी त्वम्
आलस्यम् जहि जागृहि शीघ्रम् ॥ अधुना ... ।

उज्यालो भइसक्यो । भाइ चाँडै निद्रा त्याग । बुबा सूर्य देवताको पूजा गर्नुहुन्छ । बहिनी दाँत माझ्छिन् । आमा खाना बनाउनुहुन्छ । भँगेराले मिठो गीत गाउँछ । बहिनी ! चिसो पानी पिऊ । भाइ पनि उठिसकेको छ । तिमी पन अल्छ्याइँ नमानेर चाँडै उठ ।

२. कोष्ठकस्थान् शब्दान् क्रमेण स्थापयित्वा रिक्तस्थानम् पूरयत *(कोठाका शब्दहरू क्रमशः राखी खाली ठाउँ भर्नुहोस्)*

| प्रातः, दन्तधावनम्, स्वल्पाहारम्, गृहकार्यम्, दिवा, रात्रौ, सायम् |
|---|

मम भ्राता --------- उत्तिष्ठति । ततः --------- करोति । ततः --------- करोति । ततः --------- करोति । --------- विद्यालयम् गच्छति । --------- गृहम् आगच्छति । --------- शयनम् करोति ।

३. चित्रस्य, कोष्ठस्थानाम् शब्दानाम् च साहाय्येन रिक्तस्थानम् पूरयत *(चित्र हेरी कोष्ठकबाट शब्द छानेर खाली ठाउँ भर्नुहोस्)*



| व्यञ्जनम्, स्वच्छः, दुग्धम्, ओदनः, जलम्, स्वादु |
| --- |

(क) भोजनालयः ------------ अस्ति ।

(ख) कटाहे ------------ अस्ति ।

(ग) पानपात्रे ------------ अस्ति ।

(घ) स्थाल्याम् ------------ अस्ति ।

(ङ) भोजनम् ------------ अस्ति ।

(च) ------------ उष्णम् अस्ति ।

| भान्सा सफा छ । कराहीमा सब्जी छ । गिलासमा पानी छ । थालमा भात छ । भोजन मिठो छ । दुध तातो छ । |
| --- |

४. चित्रम् विलोक्य अधस्तनम् शब्दम् उच्चारयत *(चित्र हेरेर शब्दको उच्चारण गर्नुहोस्)*



आ(म्र)म्



क(र्क)टी



नार(ङ्ग)ः



बिल्वः



निम्बुकम्



द्राक्षा

५. उदाहरणम् अनुसृत्य अक्षरम् लिखत *(उदाहरण हेरी अक्षर बनाउनुहोस्)*

घ् + र् + अ = घ्र

द् + र् + अ = 

प् + र् + अ = 

भ् + र् + अ = 

म् + र् + अ = 

६. कोष्ठकस्थैः शबदैः चित्रनाम लिखत *(बाकसबाट शब्द छानेर चित्रको नाम लेख्नुहोस्)*

| खेलनम्, दन्तधावनम्, शयनम्, जागरणम्, लेखनम्, पठनम् |
|---|



(क) .............



(ख) .............



(ग) .............



(घ) .............



(ङ) .............



(च) .............

## ७. अधस्तनम् अनुच्छेदम् पठत *(तलको अनुच्छेद पढ्नुहोस्)*



सुखमाया शेर्पा द्वितीयायाम् कक्षायाम् पठति । तस्याः गृहम् ग्रामे अस्ति । तस्याः एकः अनुजः अस्ति । सः प्रथमायाम् कक्षायाम् पठति । तस्याः पिता चमरीम् पालयति । तस्याः माता मेषम् पालयति । परिवारे सुखमाया, तस्याः भ्राता, पिता, माता च सन्ति । ते प्रातः चमर्याः दुग्धम् पिबन्ति । भोजने ओदनम्, यवागूम्, आलुकस्य व्यञ्जनम् च खादन्ति । शनिवासरे सुखमाया मात्रा सह मेषचारणाय गच्छति । तस्याः भ्राता पित्रा सह चमर्याः गोष्ठम् गच्छति । अन्येषु दिवसेषु सुखमाया, तस्याः भ्राता च विद्यालयम् गच्छतः ।

सुखमाया शेर्पा दुई कक्षामा पढ्छिन् । उनको घर गाउँमा छ । उनको एउटा भाइ पनि छ । ऊ एक कक्षामा पढ्छ । उनका बुबा चौँरी पाल्नुहुन्छ । उनकी आमा भेडा पाल्नुहुन्छ । परिवारमा सुखमाया, उनको भाइ, आमा र बुबा हुनुहुन्छ । उनीहरू बिहान चौँरीको दुध पिउँछन् । खानामा भात, ढिँडो र आलुको तरकारी खान्छन् । शनिबार सुखमाया आमासँग भेडा चराउन जान्छिन् । उनको भाइ बुबासँग चौँरीगोठमा जान्छ । अरू दिन सुखमाया र उनको भाइ विद्यालय जान्छन् ।

## ८. अनुच्छेदात् समुचितम् उत्तरम् अन्विष्य पुस्तिकायाम् लिखत *(अनुच्छेदबाट सही उत्तर छानेर कापीमा लेख्नुहोस्)*

सन्देशः झा जनकपुरे वसति । सः कृषकः अस्ति । तस्य पत्नी चित्रलेखा शिक्षिका अस्ति । तस्य पुत्री शान्ता द्वितीयकक्षायाम् पठति । तस्य पुत्रः विश्वनाथः तृतीयकक्षायाम् पठति । प्रातः सन्देशः जानकीमन्दिरम् गच्छति । विश्वनाथः गृहकार्यम् करोति । शान्ता



च पठति । चित्रलेखा भोजनम् पचति । सन्देशः दिवा क्षेत्रम् गच्छति । चित्रलेखा, विश्वनाथः, शान्ता च सह एव विद्यालयम् गच्छन्ति । विश्वनाथः अधुना बालकः अस्ति । सः पश्चात् युवकः भविष्यति । सः मातुः पितुः च सेवाम् करिष्यति । शान्ता अपि अधुना बाला अस्ति । सा सम्यक् पठिष्यति । सा माता इव शिक्षिका भविष्यति ।

(क) सन्देशः झा जनकपुरे किम् करोति ?

(अ) पठति (आ) गायति (इ) वसति

(ख) सन्देशस्य पत्नी का अस्ति ?

(अ) विश्वनाथः (आ) चित्रलेखा (इ) शान्ता

(ग) दिवा के विद्यालयम् गच्छन्ति ?

(अ) चित्रलेखा, विश्वनाथः, शान्ता च

(आ) शान्ता, चित्रलेखा, सन्देशः च

(इ) विश्वनाथः, शान्ता, सन्देशः च

(घ) कः पश्चात् युवकः भविष्यति ?

(अ) शान्ता (आ) सन्देशः (इ) विश्वनाथः

(ङ) जोडा मिलाउनुहोस्

| | |
|---|---|
| सन्देशः | बालकः |
| चित्रलेखा | बालिका |
| विश्वनाथः | कृषकः |
| शान्ता | शिक्षिका |

सन्देश झा जनकपुरमा बस्नुहुन्छ । उहाँ किसान हुनुहुन्छ । उहाँकी पत्नी चित्रलेखा शिक्षिका हुनुहुन्छ । उहाँकी छोरी दुई कक्षामा पढ्छिन् । उहाँका छोरा विश्वनाथ तीन कक्षामा पढ्छन् । बिहान सन्देश जानकी मन्दिर जानुहुन्छ । विश्वनाथ गृहकार्य गर्छन् । शान्ता पनि पढ्छिन् । चित्रलेखा खाना पकाउनुहुन्छ । सन्देश दिउँसो खेतमा जानुहुन्छ । चित्रलेखा, विश्वनाथ र शान्ता सँगसँगै विद्यालय जान्छन् । बेलुकी सबै घर फर्किन्छन् । विश्वनाथ अहिले बालक छन् । उनी पछि युवक हुने छन् । उनले मातापिताको सेवा गर्ने छन् । शान्ता पनि अहिले बालिका छिन् । उनी राम्ररी पढ्ने छिन् । उनी आमाजस्तै शिक्षिका बन्ने छिन् ।

९. सख्युः पठनम् श्रुत्वा उच्चैः पठत *(साथीले पढेको सुनी ठुलो स्वरमा पढ्नुहोस्)*



अनुजः गच्छति ।



अनुजाः गच्छन्ति ।



अनुजा खेलति ।



अनुजाः खेलन्ति ।

## १०. चित्रम् वर्णयत *(चित्रको वर्णन गर्नुहोस्)*



अधुना - अहिले, Now
प्रातः - बिहान, Morning
शीघ्रम् - छिटो, Quick
हे भ्रातः ! - हे भाइ, Oh brother
जनकः - बुबा, Father
अनुजा - बहिनी, Younger sister
अर्चति - पूजा गर्नुहुन्छ, Worships
जननी - आमा, Mother
स्वल्पाहारः - खाजा, Breakfast
शय्या - ओछ्यान, Bed
सलिलम् - पानी, Water
एकाकी - एक्लै, Single
आलस्यम् - अल्छीपन, Laziness
जागृहि - उठ, Wake up please!
दन्तधावनम् - दाँत माझ्ने काम, Brushing teeth
भोजनालयः - भान्सा, kitchen
व्यञ्जनम् - तरकारी, Curry
स्वच्छः - सफा, Clean
दुग्धम् - दुध, Milk
ओदनः - भात, Rice
स्वादु - मिठो, Tasty
चटकः - भँगेरो, Sparrow
कटाहे - कराहीमा, In the frypane
स्थाल्याम् - थालमा, In the plate
पानपात्रे - गिलासमा, In the glass
उष्णम् - तातो, Hot
आम्रम् - आँप, Mango
निम्बुकम् - कागती, Lemon
बिल्वः - बेल, Wood apple
कर्कटी - काँक्रो, Cucumber
नारङ्गः - सुन्तला, Orange
द्राक्षा - अङ्गुर, Grapes
खेलनम् - खेल्नु, Playing
जनकपुरे - जनकपुरमा, In Janakpur
शिक्षिका - शिक्षिका, Female teacher
क्षेत्रम् - खेत, Watered field
सम्यक् - राम्ररी, Well
सायम् - साँझ, Evening

# षष्ठः पाठः

# कार्यसमयः

## १. सखिभिः सह गायत *(साथीहरू मिलेर गाउनुहोस्)*



प्रातः जागरणम् समये
रात्रौ शयनम् कुरु समये ।



समये पठनम्, समये रटनम्
समये कुरु विद्यालयगमनम्
समये क्रीडा, समये स्नानम्
समये गृहकार्यम् कुरु सर्वम् । प्रातः ..... ।



चन्द्रः समये, सूर्यः समये
वर्षा समये, शीतम् समये
प्रकृतिः सर्वम् कुरुते समये
वयम् च कार्यम् कुर्मः समये । प्रातः ...... ।

| |
|---|
| बिहान ठिक समयमा उठ । बेलुका ठिक समयमा सुत । ठिक समयमा पढ, आउँदो पार र विद्यालय जाऊ । ठिक समयमा खेल, ठिक सयममै नुहाऊ । गृहकार्य पनि ठिक समयमा गर । चन्द्र र सूर्य ठिक समयमा उदाउँछन् र अस्ताउँछन् । वर्षा र जाडो पनि आफ्नै समयमा हुन्छ । प्रकृतिले सबै काम ठिक समयमा गर्छ । हामी पनि सबै काम ठिक समयमै गर्छौं । |

## २. चित्रम् विलोक्य घटिकावलोकनम् जानीत *(चित्र हेरी घडी हेर्न सिक्नुहोस्)*



दीर्घसूचिका द्वादशे अस्ति ।
लघुसूचिका अपि द्वादशे अस्ति ।
अधुना द्वादशवादनम् ।



दीर्घसूचिका द्वादशे अस्ति ।
लघुसूचिका तृतीये अस्ति ।
अधुना त्रिवादनम् ।



दीर्घसूचिका द्वादशे अस्ति ।
लघुसूचिका षष्ठे अस्ति ।
अधुना षड्वादनम् ।



दीर्घसूचिका द्वादशे अस्ति ।
लघुसूचिका नवमे अस्ति ।
अधुना नववादनम् ।

३. चित्रम् विलोक्य समुचितशब्देन रिक्तस्थानम् पूरयत *(चित्र हेर्नुहोस् र मिल्ने शब्द छानेर खाली ठाउँमा राख्नुहोस्)*



| स्नानागारम्, प्रातः, नालः, जलम्, स्नानम्, फेनकम्, प्रोञ्छः, वस्त्राणि |
|---|

अयम् ........... अस्ति । अहम् ......... स्नानागारम् गच्छामि । तत्र एकः ........ अस्ति । नाले शीतम् .......... वहति । अहम् शीतेन जलेन ........ करोमि । शरीरे ....... सञ्चारयामि । ततः प्रक्षालयामि । समीपे ....... अस्ति । अहम् तेन शरीरम् प्रोञ्छामि । ततः ....... धारयामि ।

| यो स्नानघर हो । म बिहान स्नानघर जान्छु । त्यहाँ एउटा धारो छ । धारामा चिसो पानी आउँछ । म चिसो पानीले नुहाउँछु । शरीरमा साबुन लगाउँछु । नजिकै गम्छा छ । त्यसले शरीर पुछ्छु अनि कपडा लगाउँछु । |
|---|

## ४. चित्रम् विलोक्य शब्दम् उच्चारयत *(चित्र हेर्नुहोस् र उच्चारण गर्नुहोस्)*



व्यायामः



योगाभ्यासः



ध्यानम्



नमनम्

## ५. वर्णसम्मेलनम् कृत्वा शब्दम् रचयत *(वर्णहरू जोडेर शब्द बनाउनुहोस्)*

क् + आ + र् + य् + अ + म् = कार्यम्

व् + अ + र् + ष् + आ = ----------

स् + ऊ + र् + य् + अः = ----------

स् + अ + र् + व् + अः = ----------

क् + ऊ + र् + म् + अः = ----------

## ६. द्रुतगत्या पठत *(छिटो छिटो पढ्नुहोस्)*

योगेशः कुमालः, जानकी मुसहरः च झापामण्डले वसतः । तयोः विद्यालयः दमकनगरे अस्ति । योगेशः जानकीम् पृच्छति-

योगेशः - जानकि ! किम् अस्ति ?

जानकी - कुशलम् अस्ति, तव किम् अस्ति ?



योगेशः - मम अपि कुशलम् अस्ति ।

जानकी - त्वम् गृहे किम् करोषि ?

योगेशः - अहम् पठामि, पितुः सहयोगम् अपि करोमि ।

जानकी - सहयोगम् ?

योगेशः - पिता मृत्पात्राणि निर्माति । अहम् तत्र सहयोगम् करोमि । सः यद् वस्तु याचते तद् ददामि ।

जानकी - अहो ! मम पिता क्षेत्रे कृषिम् करोति । अहम् अपि तस्य हस्ते बीजम् ददामि ।

योगेशः - सुन्दरम् । अधुना कक्षासमयः । पुनः मिलाव ।

जानकी - अस्तु, पुनः मिलाव ।

योगेश कुमाल र जानकी मुसहर झापा जिल्लामा बस्छन् । उनीहरूको विद्यालय दमकमा छ । योगेश जानकीलाई सोध्छन्-

योगेशः - जानकी ! के छ ?

जानकी - ठिक छ, तिम्रो के छ ?

योगेश - मेरो पनि ठिक छ ।

जानकी - तिमी घरमा के गर्छौ ?

योगेश - म पढ्छु । बाबालाई सहयोग पनि गर्छु ।

जानकी - सहयोग ?

योगेश - बुबा माटाका भाँडाहरू बनाउनुहुन्छ । म उहाँलाई सघाउँछु । उहाँले जे माग्नुहुन्छ, म त्यो दिन्छु ।

जानकी - अहो ! मेरा बुबा पनि खेतमा काम गर्नुहुन्छ । म पनि उहाँलाई सघाउँछु । म उहाँको हातमा बिउ राखिदिन्छु ।

योगेश - राम्रो ! अहिले कक्षा हुने बेला भयो । फेरि भेटौँला ।

जानकी - ल, फेरि भेटौँला ।

## ७. अनुच्छेदात् समुचितम् उत्तरम् अन्विष्य पुस्तिकायाम् लिखत *(अनुच्छेदबाट सही उत्तर छानेर कापीमा लेख्नुहोस्)*

अद्यत्वे प्रातः षड्वादने सूर्यः उदेति । सायम् षड्वादने चन्द्रः उदेति । प्रातः सप्तवादने अहम् उत्तिष्ठामि । सायम् सप्तवादने अहम् पठामि । अहम् प्रातः अष्टवादने गृहकार्यम् करोमि । रात्रौ अष्टवादने भोजनम् करोमि । प्रातः नववादने अहम् विद्यालयम् गच्छामि । रात्रौ नववादने अहम् शयनम् करोमि । प्रातः दशवादने पिता क्षेत्रम् गच्छति । दिवा एकादशवादने माता भाण्डानि क्षालयति । दिवा द्वादशवादने मध्यदिनम् भवति । मध्यदिने पिता विश्रामम् करोति । एकवादने मम खेलस्य समयः । अहम् सखिभिः सह खेलामि । द्विवादने संस्कृतस्य कक्षा










भवति । शिक्षकः गीतम् गायति । वयम् च गीतम् गायामः । त्रिवादने अवकाशः भवति । अहम् गृहम् आगच्छामि । चतुर्वादने भगिन्या सह खेलामि । पञ्चवादने हस्तौ, पादौ मुखम् च प्रक्षालयामि । ततः लिखामि ।

(क) सूर्यः कस्मिन् समये उदेति ?

(अ) दिवा दशवादने (आ) प्रातः षड्वादने (इ) प्रातः सप्तवादने

(ख) सायम् कतिवादने भोजनसमयः ?

(अ) सप्तवादने (आ) पञ्चवादने (इ) अष्टवादने

(ग) दिवा द्वादशवादने किम् भवति ?

(अ) शयनकालः (आ) मध्यदिनम् (इ) मध्यरात्रिः

(घ) द्विवादने शिक्षकः किम् करोति ?

(अ) गीतम् गायति (आ) विद्यालयम् गच्छति (इ) गृहम् गच्छति

(ङ) प्रातः कतिवादने अहम् विद्यालयम् गच्छामि ?

(अ) अष्टवादने (आ) एकादशवादने (इ) नववादने

(च) हस्तौ, पादौ मुखम् च कदा प्रक्षाल्यन्ते ?

(अ) सायम् षड्वादने (आ) सायम् पञ्चवादने (इ) सायम् सप्तवादने

आजभोलि बिहान छ बजे सूर्य उदाउँछ । साँझ छ बजे चन्द्रमा उदाउँछ । बिहान सात बजे म उठ्छु । बिहान आठ बजे गृहकार्य गर्छु । राति आठ बजे भोजन गर्छु । बिहान नौ बजे विद्यालय जान्छु । रातको नौ बजे म सुत्छु । बिहान दश बजे बुबा खेतमा जानुहुन्छ । दिउँसो एघार बजे आमा भाँडा माझ्नुहुन्छ । दिउँसो बाह्र बाजे मध्य दिन हुन्छ । मध्यदिनमा बुबा आराम गर्नुहुन्छ । एक बजे मेरो खेल्ने समय हो । म साथीसँग खेल्छु । दुई बजे संस्कृतको कक्षा हुन्छ । शिक्षक गीत गाउनुहुन्छ । हामी पनि गीत गाउँछौँ । तीन बजे छुट्टी हुन्छ । म घर आउँछु । चार बजे बहिनीसँगै खेल्छु । पाँच बजे हात, खुट्टा र मुख धुन्छु । त्यसपछि लेख्छु ।

## ८. उदाहरणानुसारेण रिक्तस्थानम् पूरयत *(उदाहरण हेर्नुहोस् र खाली ठाउँ भर्नुहोस्)*

| खेलनसमयः, भोजनसमयः, शयनसमयः, अवकाशसमयः, लेखनसमयः |
|---|

(क) अहम् सप्तवादने पठामि । सप्तवादने मम पठनसमयः अस्ति ।

(ख) अहम् चतुर्वादने खेलामि । चतुर्वादने मम ............ अस्ति ।

(ग) अहम् रात्रौ अष्टवादने भोजनम् करोमि । अष्टवादने मम.... अस्ति ।

(घ) अहम् रात्रौ नववादने शयनम् करोमि । रात्रौ नववादने मम ....... अस्ति ।

(ङ) त्रिवादने मम अवकाशः भवति । त्रिवादने मम .......... अस्ति ।

(च) पञ्चवादने अहम् लिखामि । पञ्चवादने मम ........... अस्ति ।

## ९. सारिणीम् पठित्वा उदाहरणम् च अनुसृत्य वाक्यानि रचयत *(तालिका पढेर उदाहरण हेरी वाक्य बनाउनुहोस्)*

| | | | | |
|---|---|---|---|---|
| सन्देशः | | पठति | | पठिष्यति |
| सुखमाया | | हसति | श्वः | हसिष्यति |
| जानकी | अद्य | खेलति | अपि | खेलिष्यति |
| विश्वनाथः | | खनति | | खनिष्यति |
| शान्ता | | खादति | | खादिष्यति |

(क) सन्देशः अद्य पठति, श्वः अपि पठिष्यति ।

(ख) ------------------------------------------------------------ ।

(ग) ------------------------------------------------------------ ।

(घ) ------------------------------------------------------------ ।

(ङ) ------------------------------------------------------------ ।

जागरणम् - उठ्ने काम, Waking up
समये - ठिक समयमा, On time
रात्रौ - राति, At night
रटनम् - घोक्ने काम, Remembering
विद्यालयगमनम् - विद्यालय जाने काम, Going to school
गृहकार्यम् - गृहकार्य, Homework
चन्द्रः - चन्द्रमा, Moon
सूर्यः - सूर्य, Sun
वर्षा - वर्षा, Rain
स्नानागारम् - नुहाउने कोठा, Bathroom
नालः - धारो, Tap
प्रोञ्छः - गम्छा, Towel
प्रक्षालयामि - धुन्छु, I wash
समीपे - नजिकै, Near
दीर्घसूचिका - लामो सुई, Long needle
लघुसूचिका - छोटो सुई, Short needle
व्यायामः - कसरत, Exercise
योगाभ्यासः - योग, Yoga practice
ध्यानम् - ध्यान, Meditation
नमनम् - ढोग, Bow
कुशलम् - सन्चै, Well
मृत्पात्राणि - माटाका भाँडाहरू, Muddy pot
सहयोगम् - सहयोग, Help
कक्षासमयः - कक्षाको समय, Class time
उदेति - उदाउँछ, Rises
उत्तिष्ठामि - उठ्छु, I wake up
भाण्डानि - भाँडाहरू, Utensils
क्षालयति - धुनुहुन्छ, Washes
अवकाशः - छुट्टी, Vacation

## सप्तमः पाठः

# शिष्टाचारः

१. शिक्षकेण सह वाचयत *(शिक्षकसँगै गाउनुहोस्)*

वैशाखे मम भगिनी जाता
ज्येष्ठे जातः ज्येष्ठः भ्राता ।
आषाढे बहु गर्जति मेघः
श्रावणमासे नद्याम् वेगः ॥

भाद्रे हरिता सर्वा धरणी
आश्विनमासे विजयादशमी
कार्तिकमागे द्यौसीगीतम्
मार्गे मासे प्रभवति शीतम् ॥

पौषे मन्दः सूर्यप्रकाशः
माघे आग्ने समीपे वासः
फाल्गुने नास्ति धूलिका
चैत्रे कोकिलवाणी मधुरा ॥




वैशाखमा मेरी बहिनी जन्मिन् । जेठमा जेठा दाजु जन्मिनुभयो । असारमा मेघ निकै गर्जिन्छ । साउनमा नदीमा वेग बढ्छ । भदौमा पृथ्वीमा सबैतिर हरियाली हुन्छ । असोजमा दसैं पर्छ । कात्तिकमा द्यौसी खेलिन्छ । मङ्सिरमा जाडो बढ्छ । पुसमा घाम मधुरो हुन्छ । माघमा आगो तापिन्छ । फागुनमा कुहिरो हट्छ । चैतमा कोइलीको मधुर स्वर सुनिन्छ ।

२. शिक्षकमुखात् श्रुत्वा अनूच्चारयत *(शिक्षकबाट सुनेर उच्चारण गर्नुहोस्)*

| | | |
|---|---|---|
| ज्येष्ठः | श्रावणः | भाद्रः |
| आश्विनः | फाल्गुनः | चैत्रः |

३. चित्रम् विलोक्य कोष्ठकस्थैः शब्दैः रिक्तस्थानम् पूरयत *(चित्र हेरी कोष्ठकबाट शब्द छानेर खाली ठाउँ भर्नुहोस्)*

| (उपवनम्, गच्छामि, भगिनी, पुष्पाणि, हरिताः, अस्ति, दूर्वाः) |
|---|



मम गृहस्य समीपे एकम् ------------ अस्ति । अहम् तत्र प्रातः भ्रमणाय ------------ । मम ------------ अपि सह एव गच्छति । उपवने ------------ सन्ति । ------------ वृक्षाः अपि सन्ति । एकः मार्गः ------------ । मार्गस्य समीपे हरिताः ------------ सन्ति ।

| मेरो घरको नजिकै एउटा बगैँचा छ । म त्यहाँ बिहान घुम्न जान्छु । मेरी बहिनी पनि सँगै जान्छिन् । बगैँचामा फूलहरू छन् । हरिया रुखहरू पनि छन् । एउटा बाटो छ । बाटाको छेउमा हरियो दुबो छ । |
|---|

४. चित्रम् विलोक्य शब्दम् उच्चारयत *(चित्र हेर्नुहोस् र शब्दका उच्चारण गर्नुहोस्)*












## ५. परस्परम् मेलयत *(जोडा मिलाउनुहोस्)*

| | |
|---|---|
| रसः | नमः |
| लाभः | काशम् |
| मनः | सरः |
| पाशः | भालः |
| शाकम् | शापः |

## ६. अधस्तनौ श्लोकौ शुद्धम् वाचयत *(तलका श्लोक शुद्धसँग पढ्नुहोस्)*

उपदेशसहस्रेण न मूर्खः शठताम् त्यजेत् ।
अङ्गारः शतधौतेन मलिनत्वम् न मुञ्चति ॥

आदिदेव नमस्तुभ्यम् प्रसीद मम भास्कर !
दिवाकर नमस्तुभ्यम् प्रभाकर नमोऽस्तु ते ॥

हजार थरी उपदेश दिए पनि मूर्खले मुर्ख्याइँ छोड्दैन । सय पटक धोए पनि अँगारले कालो पन छोडेको हुँदैन ।

हे आदिदेव भास्कर ! तपाईँलाई नमस्कार छ । मसँग प्रसन्न हुनुहोस् । हे दिवाकर ! हे प्रभाकर ! तपाईँलाई नमस्कार नै नमस्कार छ ।

## ७. अनुच्छेदात् समुचितम् उत्तरम् अन्विष्य रिक्तस्थाने लिखत *(अनुच्छेदबाट सही उत्तर छानेर खाली ठाउँमा लेख्नुहोस्)*

अद्य शनिवासरः अस्ति । अद्य अहम् विद्यालयम् न गच्छामि । मम पिता शनिवासरे नगरम् गच्छति । अद्य अहम् अपि पित्रा सह नगरम् गच्छामि । नगरम् गत्वा मिष्टान्नम् खादामि । मया सह विंशतिः रूप्यकाणि सन्ति । नगरे आपणाः भवन्ति । तत्र बहूनि क्रीडनकानि भवन्ति । अहम् एकम् क्रीडनकम् क्रीणामि । पिता नवीनानि वस्त्राणि क्रीणाति । सायम् अहम् पिता च गृहम् आगमिष्यावः ।

(क) शनिवासरे अहम् ------------ ।

(अ) विद्यालयम् न गच्छामि ।

(आ) विद्यालयम् गच्छामि ।

(इ) गृहम् न गच्छामि ।

(ख) मम पिता शनिवासरे ------------ गच्छति ।

(अ) ग्रामम् (आ) नगरम् (इ) क्षेत्रम्

(ग) अहम् नगरम् गत्वा ------------ खादामि ।

(अ) भोजनम् (आ) फलम् (इ) मिष्टान्नम्

(घ) मया सह विंशतिः रूप्यकाणि ------------ ।

(अ) अस्ति (आ) स्तः (इ) सन्ति

(ङ) पिता ------------ क्रीणाति ।

(अ) नवीनानि वस्त्राणि

(आ) नवीनानि क्रीडनकानि

(इ) मिष्टान्नानि

आज शनिबार हो । आज म विद्यालय जान्नँ । मेरा बुबा शनिबार बजार जानुहुन्छ । आज म पनि बुबासँग बजार जान्छु । बजार गएर मिठाई खान्छु । मसित बिस रुपियाँ छ । बजारमा पसलहरू हुन्छन् । त्यहाँ धेरै खेलौनाहरू हुन्छन् । म एउटा खेलौना किन्छु । बुबा नयाँ लुगाहरू किन्नुहुन्छ । साँझमा म र बुबा घर आउने छौँ ।

## ८. चित्राणाम् क्रमनिर्धारणम् कुरुत *(चित्र हेरेर क्रम मिलाउनुहोस्)*









४


५


६


| |
|---|
| पठनम् |
| विद्यालयगमनम् |
| दन्तधावनम् |
| जागरणम् |
| क्रीडनम् |
| शयनम् |

१. ----------------- २. ----------------- ३. --------------------

४. ----------------- ५. ----------------- ६. --------------------

९. कोष्ठकात् शब्दम् विचित्य रिक्तस्थानम् पूरयत *(कोठाबाट शब्द छानेर खाली ठाउँ भर्नुहोस्)*

| खादतः, खेलति, पठतः, भविष्यतः, गमिष्यति, धावतः, हसतः, भ्रमति, पिबतः, चलतः |
|---|

| गच्छति | गच्छतः |
|---|---|
| खादति | -------------------- |
| -------------------- | खेलतः |
| पठति | -------------------- |
| भविष्यति | -------------------- |
| -------------------- | गमिष्यतः |

| गच्छति | गच्छतः |
|---|---|
| धावति | -------------------- |
| हसति | -------------------- |
| -------------------- | भ्रमतः |
| पिबति | -------------------- |
| चलति | -------------------- |

भगिनी - बहिनी, Sister
ज्येष्ठः - जेठो, Elder
गर्जति - गर्जिन्छ, Roars
नद्याम् - नदीमा, In river
हरिता - हरियो (स्त्री.), Green
मार्गः - मङ्सिर, Eight solar month
मन्दः - मधुरो, Feeble
अग्ने समीपे - आगोको छेउमा, Near the fire
धूलिका - कुहिरो, Fog
कोकिलः - कोइली, Black cuckoo
मधुरा - मिठो (स्त्री.), Sweet
शुभसन्ध्या - शुभसन्ध्या, Good evening
शुभदिनम् - शुभदिन, Good day
शुभरात्रिः - शुभरात्रि, Good night
धरणी - पृथिवी, Earth
विजयादशमी - दसैं, Dashain festival
उपवनम् - बगैंचा, Garden
दूर्वाः - दुबो, Type of sacred grass used in sacrifice
शुभप्रभातम् - शुभ बिहानी, Good morning

## अष्टमः पाठः सहकार्यम्

१. **शिक्षकेण सह वाचयत** *(शिक्षकसँगै गाउनुहोस्)*



वयम् सर्वे मिलित्वा
विद्यालयम् गच्छामः ।
मित्रैः सह उषित्वा
संस्कृतशिक्षाम् पठामः ॥

परस्परम् मिलित्वा
कक्षाम् स्वच्छाम् कुर्मः ।
अवकाशस्य दिवसे
गृहम् स्वच्छम् कुर्मः ॥

गोष्ठे सन्ति गावः
मिष्टम् दुग्धम् ददति ।
दुग्धम् घृतम् भुक्त्वा
देहः पुष्टः भवति ॥

हामी सबै मिलेर विद्यालय जान्छौँ । साथीहरू सँगै बसेर खाजा खान्छौँ । साथी साथी मिलेर कोठा सफा गर्छौं । बिदाको दिन सबैतिर सफा गर्छौं । गोठमा गाई छन् । तिनले मिठो दुध दिन्छन् । दुध र घिउ खाएर शरीर पुष्ट हुन्छ ।

२. **शब्दौ संयोज्य नवीनशब्दम् लिखत** *(शब्दहरू जोडी नयाँ शब्द बनाउनुहोस्)*

कक्षा + कोष्ठः = ------------------------ विद्या + धनम् = ----------------------------

दया + भावः = ------------------------- नदी + वेगः = ------------------------------

## ३. चित्रम् विलोक्य कोष्ठकस्थेन शब्देन रिक्तस्थानम् पूरयत *(चित्र हेरी कोष्ठकका शब्द राखेर खाली ठाउँ भर्नुहोस्)*




| खादन्ति, छात्राः, कक्षाकोष्ठे, स्यूते, सहैव, ते, स्वच्छः, अल्पाहारम् |
|---|

अत्र .......... सन्ति । ते.......... वसन्ति । ते पुस्तकानि ......... स्थापयन्ति । मध्यान्तरसमये .......... कुर्वन्ति । ते रोटिकाम् ......... । छात्राः ......... पठन्ति । ...... सहैव खादन्ति । कक्षाकोष्ठः ........ वर्तते ।

| यहाँ विद्यार्थीहरू छन् । तिनीहरू कक्षाकोठामा बस्छन् । तिनीहरू किताब झोलामा राख्छन् । मध्यान्तरको समयमा खाजा खान्छन् । तिनीहरू रोटी खान्छन् । विद्यार्थीहरू सँगसँगै पढ्छन् । तिनीहरू सँगसँगै खान्छन् । कक्षाकोठा सफा छ । |
|---|

## ४. अधस्तनम् अनुच्छेदम् पठत *(तलको अनुच्छेद पढ्नुहोस्)*

यमपञ्चकस्य प्रथमदिने काकस्य पूजनम् भवति । द्वितीयदिने कुक्कुरस्य पूजनम् भवति । तृतीयदिने प्रातःकाले गोः पूजनम् भवति । तृतीयदिवसस्य रात्रौ लक्ष्मीपूजनम् भवति । तस्मिन् एव दिने दीपावली भवति । चतुर्थदिने गोवर्धनपूजा भवति । अस्मिन् दिने आत्मपूजा (म्हःपूजा)

च भवति । पञ्चमदिने भ्रातृपूजनम् भवति । केचन किजापूजाम् कुर्वन्ति । यमपञ्चकस्य अपरम् नाम दीपावली वर्तते ।



यमपञ्चक (तिहार) को पहिलो दिन कागको पूजा हुन्छ । दोस्रो दिन कुकुरको पूजा हुन्छ । तेस्रो दिन बिहान गाईको पूजा हुन्छ । तेस्रो दिन राति लक्ष्मीपूजा हुन्छ । यसै दिनको राति झिलिमिली बत्ती बालिन्छ । चौथो दिनमा गोवर्धनपूजा हुन्छ । यस दिन आत्मपूजा (म्हःपूजा) हुन्छ । पाँचौं दिनमा भाइपूजा हुन्छ । कोही किजापूजा गर्दछन् । यमपञ्चकको अर्को नाम दीपावली हो ।

५. चित्रम् विलोक्य अधस्तान् शब्दान् उच्चारयत *(चित्र हेर्नुहोस् र तलका शब्दको उच्चारण गर्नुहोस्)*



सूर्यः



वृक्षः



कपोतः



वत्सः



शिक्षकः



महिषः

६. परस्परम् मेलयत *(जोडा मिलाउनुहोस्)*



अजा



गौः



सूचीकारः



घण्टा



कृषकः

७. प्रश्नम् श्रुत्वा समुचिते उत्तरे वृत्ताङ्कनम् ◯ कुरुत *(प्रश्न सुन्नुहोस् र सही उत्तरमा गोलो घेरा ◯ लगाउनुहोस्)*

मम पितुः नाम हर्कबहादुरः अस्ति । सः शिक्षकः अस्ति । मम मातुः नाम डोल्मा अस्ति । सा स्वास्थ्यसेविका अस्ति । मम पितृव्यस्य नाम सन्तबहादुरः अस्ति । सः व्यापारम् करोति । मम अग्रजः माघमासे विदेशात् आगमिष्यति ।

(क) पितुः नाम किम् अस्ति ?

(अ) अर्कबहादुरः (आ) हर्कबहादुरः (इ) तर्कबहादुरः

(ख) का स्वास्थ्यसेविका अस्ति ?

(अ) माता (आ) भगिनी (इ) मातुली

(ग) कः व्यापारम् करोति ?

(अ) मातुलः (आ) अग्रजः (इ) पितृव्यः

(घ) अग्रजः कस्मिन् मासे विदेशात् आगमिष्यति ?

(अ) मार्गशीर्षमासे (आ) पौषमासे (इ) माघमासे

मेरो बुबाको नाम हर्कबहादुर हो । उहाँ शिक्षक हुनुहुन्छ । मेरी आमाको नाम डोल्मा हो । उहाँ स्वास्थ्यसेविका हुनुहुन्छ । मेरा काकाको नाम सन्तबहादुर हो । उहाँ व्यापार गर्नुहुन्छ । मेरा दाजु माघ महिनामा विदेशबाट आउनुहुने छ ।

## ८. रङ्गम प्रपूर्य चित्रस्य नाम लिखत *(रङ भरी चित्रको नाम लेख्नुहोस्)*



इदम् ------------------------ अस्ति ।

